उल्लेख गरिएको छ। निज गौशाला २६ (छ) (१) (०७९/०८०) एक उमेर पुगेकी साबालिक व्यक्तिले आफू खुसी गरेको कार्यलाई निजको आर्थिक अवस्थाको फाइदा लिई अनुचित प्रभावमा पारी मैले निजलाई करणी गरेको भन्ने आधार लिई कसूरदार ठहर गर्नु प्रमाण ऐन, २०३१ को दफा ५४ विपरीत रहेको हुँदा उक्त फैसला बदर गरी म प्रतिवादीलाई सफाई दिलाई न्याय पाउँ भन्ने व्यहोराको प्रतिवादी सन्दिप लामिछानेको पुनरावेदन पत्र।

५४) प्रतिवादीले पीडितको उमेरमा विवाद स्थापित गर्नका लागि अदालत समक्ष पेश गरेका नुवाकोट जिल्लाबाट जारी भएको बसाई सराई दर्ता किताब, बसाईसराई प्रमाणपत्र, शंखरापुर नगरपालिकाबाट प्राप्त बसाईसराई दर्ता किताब, पीडितको जन्मदर्ता किताब, पीडिको जन्मदर्ता प्रमाणपत्र, पीडितको जन्म दर्ता सूचना फारम तथा अदालतको आदेशबाट पीडितको उमेरका सम्बन्धमा नारायणी अस्पतालको जन्म दर्ता किताब र ताँदी गाँउपालिकाका विवरण एवम् पत्राचार आफैमा बाझिएको, एकिन नभएको र निकै विरोधाभाष देखिएको तथा कृत्रिम र बनावटी समेत देखिने भएकाले उक्त लिखतलाई प्रस्तुत मुद्दामा पीडितको उमेर निर्धारण गर्न सम्बद्ध प्रमाणको रुपमा ग्रहण गर्न नमिल्ने देखिएकोले शुरु जिल्ला अदालतबाट पीडितको उमेर १८ वर्ष कायम गरी प्रतिवादीलाई अभियोग मागदाबी भन्दा घटी सजाय हुने गरी मुलुकी अपराध संहिता, २०७४ को दफा २१९ को उपदफा (३)(ङ) बमोजिम सजाय हुने ठहर गरी भएको फैसला प्रमाणिक मूल्यांकनको र प्रचलित उमेर निर्धारण गर्ने कानूनको रोहमा त्रुटिपूर्ण हुँदा बदर गरी प्रतिवादीलाई अभियोग मागदावी बमोजिम सजाय गरी पाउँ भन्ने व्यहोराको वादी नेपाल सरकारको पुनरावेदन पत्र।

५५) यसमा वादी नेपाल सरकारको प्रतिवादीलाई अभियोग मागदावी भन्दा कम सजाय भएतर्फ र प्रतिवादी सन्दिप लामिछानेको आफूलाई कसूरदार ठहर गरी सजाय भएतर्फ शुरु काठमाडौं जिल्ला अदालतको मिति २०८०/०९/२५ को फैसला उपर चित्त नबुझाई यस अदालतमा पुनरावेदन परेको देखिंदा मुलुकी फौजदारी कार्यविधि संहिता, २०७४ को दफा १४० को उपदफा (३) को प्रयोजनार्थ प्रतिवादीको पुनरावेदनको जानकारी वादी नेपाल सरकारलाई र वादी नेपाल सरकारको पुनरावेदनको जानकारी प्रतिवादीलाई दिई नियमानुसार गरी पेश गर्नू भनी यस अदालतबाट मिति २०८०/१२/२३ मा भएको आदेश।

५६) यसमा तादी गाउँपालिका २ नं. वडा कार्यालयबाट च.नं. २७६, मिति २०७९/०७/२९ को पत्र एवम् च.नं. ७१२, मिति २०८०/०२/०९ को पत्रबाट परिवर्तित नाम गौशाला २६(६)(१) ले जन्म मिति २०६२/०२/१८ राखी जन्मदर्ता प्रमाणपत्रको प्रतिलिपि माग गरेकोले मिति २०७९/०३/१४ मा जन्मदर्ताको प्रतिलिपि जारी गरेको भनी जवाफ प्राप्त भएको देखिएको हुँदा निजले उक्त जन्मदर्ता प्रमाणपत्रको प्रतिलिपि प्राप्त गर्नको लागि दिएको निवेदनको सक्कलै प्रति एवम् च.नं. ७१२, मिति २०८०/०२/०९ को पत्रसाथ संलग्न भएको भनिएको मिति २०७५/०९/१८ मा जारी गरिएको जन्मदर्ता प्रमाणपत्रको स्पष्ट

बुझिने प्रति तादी गाउँपालिका वडा नं. २ को कार्यालयबाट अबिलम्व माग गरी नियमानुसार पेश गर्नुहोला भनी यस अदालतबाट मिति २०८१/०१/०३ मा भएको आदेश।

**ठहर खण्ड**

५७) नियम बमोजिम साप्ताहिक तथा दैनिक पेसी सूचीमा चढी निर्णयार्थ पेश हुन आएको प्रस्तुत मुद्दामा पुनरावेदक वादी नेपाल सरकारको तर्फबाट उपस्थित उच्च सरकारी वकील कार्यालय पाटनका विद्वान उपन्यायाधिवक्ता श्री प्रकाश घिमिरे र विद्वान सहायक न्यायाधिवक्ता श्री रत्नकेशरी महर्जनले पीडितले जाहेरी व्यहोरा समर्थित बकपत्र गरेको र पीडितको नेपाल सरकार, राष्ट्रिय परीक्षा बोर्डबाट जारी एस.इ.ई को लब्धाङ्कपत्र तथा एस.ई.ई दिएको विद्यालयबाट जारी भएको चारित्रिक प्रमाणपत्र समेतमा निज पीडितको जन्म मिति २०६२/२/१८ उल्लेख भएबाट पीडितको उमेर १८ वर्ष पूरा नपुगेको नाबालिक भएको हुँदा प्रतिवादीलाई अभियोग दावी बमोजिम सजाय हुनुपर्दछ भनी गर्नु भएको बहस सुनियो।

५८) जाहेरवालाको तर्फबाट उपस्थित विद्वान वरिष्ठ अधिवक्ताहरु प्रा.डा. श्री शशी राउत अधिकारी, श्री सुनिता रेग्मी र श्री शान्ति रिसाल काफ्ले तथा विद्वान अधिवक्ताहरु श्री मोहना अन्सारी, श्री लेखनाथ भट्टराई, श्री प्रतिमा कँडेल खरेल, श्री नारायण चौलागाई, श्री सविता विमली, श्री अस्मिता ढकाल र श्री आश्मा आचार्यले पिडितको जन्म २०६२/२/१८ मा भई वारदातको वखत उमेर १८ वर्ष भन्दा मुनि नै भएको देखिएकोले निज नाबालक रहेको, Rape victim लाई trauma syndrome भएको कारणले जाहेरी दिन केही दिन ढिला पर्न गएको हो, पिडितको कथनलाई नै समर्थन हुने गरी निजको शारीरिक परीक्षण प्रतिवेदन रहेको विषयलाई गम्भिरतापूर्वक लिनुपर्ने हुँदा सोलाई नलिई प्रतिवादीको कसूरमा इन्कारी वयान मात्र प्रयास प्रमाण नभएको हुँदा शुरु अदालतबाट भएको फैसला त्रूटिपूर्ण भएकोले उल्टी भई पीडितले न्याय पाउनु पर्दछ भनी गर्नु भएको बहस सुनियो।

५९) त्यसैगरी पुनरावेदक प्रतिवादी सन्दिप लामिछानेको तर्फबाट उपस्थित विद्वान वरिष्ठ अधिवक्ताहरु श्री शम्भु थापा, श्री सविता भण्डारी बराल, श्री कृष्णप्रसाद सापकोटा , श्री अमिता लक्ष्मी सैजु श्रेष्ठ, श्री रमन कुमार श्रेष्ठ र श्री रामनारायण विडारी तथा विद्वान अधिवक्ताहरु श्री कृष्ण प्रसाद शर्मा, श्री रोशनी पौडेल, श्री सरोज कृष्ण घिमिरे, श्री मुरारी प्रसाद सापकोटा, श्री रामेश्वर न्यौपाने र श्री राम कुमार माझीले पीडित सावालक भएकोमा जाहेरीमा उल्लेख भएको पीडितको उमेर लगायतका विषय झुट्ठा भएको, प्रतिवादीले पीडितसँग सम्पर्क गरेको नभई पीडितले नै प्रतिवादीलाई फ्रेन्ड रिक्वेस्ट पठाएको, पीडितको प्रस्तावमा नै प्रतिवादी पीडितसँग नगरकोट गएको, जाहेरीमा पीडितलाई प्रतिवादीले जबरजस्ती करणी गरेको भनी उल्लेख गरे तापनि उक्त वारदात घटेको भन्ने मिसिल संलग्न प्रमाणबाट पुष्टि नभएको हुँदा शुरु जिल्ला अदालतबाट भएको फैसला उल्टी भई पुनरावेदक प्रतिवादीले पूर्णरुपमा सफाई पाउनु पर्दछ भनी गर्नु भएको बहस समेत सुनियो।

६०) प्रतिवादी उपर मुलुकी अपराध संहिता २०७४ को दफा २१९ को उपदफा (१) र (२) को कसूरमा सोही संहिताको दफा २१९ को उपदफा (३) को खण्ड (घ) बमोजिम सजाय गरी

सोही संहिताको दफा २१९ को (३क) को खण्ड (ख) बमोजिम जरिवाना हुन र ऐ को दफा २२८ बमोजिम प्रतिवादीबाट पीडितलाई उचित क्षतिपूर्ति भराई पाउनका साथै अपराध पीडित संरक्षण ऐन, २०७५ को दफा ४१ बमोजिम प्रतिवादीबाट क्षतिपूर्ति कोषमा रकम भराई पाउँ भन्ने अभियोगदावी भएको प्रस्तुत मुद्दामा यी पीडितको जन्म मिति २०६२/०२/१८ कायम नभई मिति २०६१/०३/१८ कायम हुने र प्रतिवादीले पीडितलाई जबरजस्ती करणीको कसूर गरेकोले निजलाई वादी पक्षले सजायको लागि प्रस्ताव गरेको मुलुकी अपराध संहिता, २०७४ को दफा २१९ को उपदफा को खण्ड ३(घ) को सजाय नभई पीडित साबालक देखिएकोले ऐ. संहिताको दफा २१९ को ३ को खण्ड (घ) बमोजिम ८ वर्ष कैद सजाय, ऐ. को दफा २१९ को उपदफा (३क) को खण्ड (ग) बमोजिम रु.३,००,०००/-(तीन लाख रुपैयाँ) जरिवाना, ऐ. को दफा २२८ बमोजिम प्रतिवादीलाई भएको जरिवाना रु. तीन लाख जरिवाना र थप दुई लाख रुपैयाँ क्षतिपूर्ति बापत प्रतिवादी सन्दिप लामिछानेबाट पीडितले भरी पाउने ठहऱ्याएको काठमाडौं जिल्ला अदालतको फैसला उपर पीडित वारदातको समयमा नाबालक नै रहेकोले नाबालक कायम गरी प्रतिवादीलाई अभियोग दावी बमोजिम सजाय गरी पाउँ भनी वादी नेपाल सरकारको र अभियोग दावीको कसूरबाट पूर्णरुपमा सफाई पाउँ भनी प्रतिवादी सन्दिप लामिछानेको अलग अलग पुनरावेदन परेको देखियो।

६१) अब, वादी नेपाल सरकार, जाहेरवाला र प्रतिवादी तर्फका कानून व्यवसायीहरुले गर्नु भएको बहस जिकिर सुनी दुवै पक्षको पुनरावेदन पत्र सहितको शुरु मिसिल संलग्न कागज प्रमाणहरुको अध्ययन गरी हेर्दा, शुरु काठमाडौं जिल्ला अदालतको फैसला मिलेको छ छैन? वादी प्रतिवादीको पुनरावेदन जिकिर पुग्न सक्छ सक्दैन? सोही विषयमा निर्णय दिनु पर्ने देखिन आयो।

६२) सर्वप्रथम, प्रस्तुत मुद्दामा पीडितको जन्म मिति २०६१/०३/१८ नै कायम हुने ठहरी वारदात मिति २०७९/०५/०५ मा पीडित १८ वर्ष उमेर पुरा भईसकेको भनी सोही आधारमा प्रतिवादीलाई अभियोग दावी भन्दा कम सजाय भएकोले पीडितले प्राप्त गरेको SEE दिएको विद्यालयबाट जारी चारित्रिक प्रमाणपत्र, तादी गाउँपालिकाबाट प्राप्त जन्म दर्ता, टोखा नगरपालिकाबाट मिति २०७४/१२/३० मा जारी गरिएको कक्षा ८ को लब्धाङ्क पत्रमा पीडितको जन्म मिति २०६२/०२/१८ उल्लेख भएकोले सोको आधारमा वारदातको दिन पीडित १७ वर्ष २ महिना १८ दिनको उमेरको देखिएकोले बालबालिका सम्बन्धी ऐन, २०७५ को दफा ८३ ले उल्लेख गरेको प्राथमिकताका आधारलाई मनन नगरी पीडितलाई साबालक कायम गरी प्रतिवादीलाई कसूर ठहर गरेको शुरु फैसला सो हदसम्म बदर गरी पीडितलाई वारदात मितिमा नाबालक नै कायम गरी प्रतिवादीलाई अभियोग दावी बमोजिम नै सजाय गरी पाउँ भन्ने वादी नेपाल सरकारको पुनरावेदन जिकिर रहेको देखिन्छ।

६३) त्यसैगरी, प्रतिवादीले पीडितलाई Mental Refreshment हुन्छ, घुम्न जाउँ भनी जोडबल गरी वारदातको दिन आफ्नो गाडीमा राखी नगरकोट घुम्न लगेको, नगरकोटको वोजिनी रिसोर्टमा आई कोठा बुक गर्न खोज्दा पीडितले नमानेको, पछि काठमाडौं पिङला स्थान स्थित होटल काठमाडौं इनको कोठा नं. ३०५ बुक गरी सोही कोठामा पीडितलाई जबरजस्ती करणी गरेको भन्ने जाहेरवालाको किटानी जाहेरी, पीडितले मौकामा कागज गर्दा जाहेरी व्यहोरा मिलान हुने गरी प्रतिवादीले आफ ूलाई जबरजस्ती करणी गरी आफ्नो शरीरमा वीर्य झारेको, आफूले इन्कार गर्दा गर्दै दोस्रो पटक पनि जबरजस्ती करणी गरेको भन्ने उल्लेख गरेको, मौकामा बुझिएका प्रकृति गिरी र पवन ढुंगानाले पीडितले आफूलाई सन्दिप लामिछानेले करणी गरेको भनी कागज गरेको, होटल काठमाडौं इनका राजन राणा, बाबुकाजी थापा मगर, सविन श्रेष्ठ र अनिष श्रेष्ठले पीडित र प्रतिवादी आफू कार्यरत होटलमा बसेको भनी कागज गरेको, होटल वोजिनी रिसोर्टका समिर पुरीले पीडित र प्रतिवादी होटलमा आएको भनी कागज गरेको, पीडितको स्वास्थ्य परीक्षण प्रतिवेदनमा Hymen Old Tear at 7 o'clock position भएको भन्ने उल्लेख भएको, पीडितले स्वास्थ्य परीक्षणको क्रममा लेखाएको Brief History मा प्रतिवादीले आफूलाई करणी गरेको भनी लेखाएको र अदालतमा समेत पीडित लगायत अन्य व्यक्तिहरुले मौकाको व्यहोरा पुष्टि गर्दै बकपत्र गरेकोले प्रमाण ऐन, २०३१ को दफा १० को उपदफा (१) र (१८) बमोजिम पीडितको र अन्य बुझिएका व्यक्तिहरुको भनाई प्रमाणमा लाग्ने भएको, प्रतिवादीले मौकामा र अदालतमा बयान गर्दा कसूरमा इन्कार गरे पनि घटनाक्रमलाई स्वीकारेको, प्रतिवादी वारदात भएको भनिएको भोलिपल्ट विदेश जाने आफूलाई तय गरेको होटल कोठाभित्र नबसी पीडित बसेकै कोठा भित्र बसेको देखिंदा प्रमाण ऐन, २०३१ को दफा ७ (ग) अनुसार पीडितलाई करणी गर्ने मनसायले नै बसेको मान्नु पर्ने, पीडितको स्वास्थ्य परीक्षण प्रतिवेदन वारदातको १५ दिन पछि र प्रतिवादीको डेढ महिनापछि भएको देखिंदा संघर्षका चिन्ह नदेखिनु अस्वाभाविक नहुनु, जाहेरी ढिला परेको भन्दैमा त्यसलाई After Thought भन्न नमिल्ने र पीडितले प्रतिवादीलाई फसाउनु पर्ने सम्मको अवस्था नदेखिने भन्ने समेतका प्रमाणका आधारमा, पीडित वारदात हुँदाका अवस्थामा १८ वर्ष उमेर पुगेकीले सोही उमेरको आधारमा प्रतिवादीलाई कसूर ठहर गरी सजाय गर्ने गरेको शुरु काठमाडौं जिल्ला अदालतको फैसला उपर आफू कसूरमा पूर्णरुपमा निर्दोष रहेकोले आरोपित कसूरबाट सफाई पाउनु पर्ने भन्ने प्रतिवादीको मुख्य रुपमा पुनरावेदन जिकिर रहेको देखियो।

६४) प्रस्तुत मुद्दामा प्रतिवादी सन्दिप लामिछानेको हकमा कसूर ठहर भएको शुरु फैसला उपर परेको पुनरावेदनमा शुरु फैसला ठिक, बेठिक के हो? निजको हकमा बोलिने नै हुँदा पीडित नाबालक देखाई सोही बमोजिम प्रतिवादीलाई सजाय प्रस्ताव गरिएकोमा वारदात भएको भनिएको समयमा पीडित १८ वर्ष पुगेको साबालक ठहरी शुरु जिल्ला अदालतबाट फैसला

भई सोही बमोजिम प्रतिवादीलाई सजाय भएकोमा पीडित नावालक भएकोले प्रतिवादीलाई दावी बमोजिम ठहर गरी पाउँ भन्ने वादीको मुख्य पुनरावेदन जिकिर भएकोले सर्वप्रथम पीडित वारदात मितिमा साबालक वा नाबालक रहेको के हो ? सो विषयमा शुरुको फैसला मिलेको छ, छैन? भन्ने विषयमा नै निष्कर्षमा पुग्न पर्ने देखियो।

६५) बालबालिका सम्बन्धी ऐन, २०७५ को दफा ८३ मा बालबालिकाको उमेर कायम गर्दा क्रमशः अस्पतालबाट जारी भएको जन्मदर्तामा उल्लिखित मिति, सो नभए स्थानिय पञ्जिकाधिकारीको कार्यालयबाट जारी भएको जन्मदर्ता प्रमाणपत्रमा उल्लिखित जन्म मिति, सो नभए विद्यालयको चारित्रिक प्रमाणपत्रमा उल्लिखित जन्म मिति वा विद्यालयमा भर्ना हुँदाका वखत उल्लेख भएको जन्म मिति, सो नभए अस्पतालबाट प्रमाणित उमेर सम्बन्धमा प्रमाणित जन्म मिति, सो नभए जन्म कुण्डली, चिना टिपोट, बालबालिकाका बाबुआमा संरक्षकले खुलाई दिएको उमेरलाई आधार मानिने कानूनी व्यवस्था देखिन्छ।

६६) प्रस्तुत मुद्दामा वादी पक्षबाट पेश भएका मनोहर सेकेण्डरी स्कूल गोंगबु काठमाडौंबाट जारी भएको कक्षा ८ को प्रमाणपत्र, एस.ई.ई. को ग्रेड सिट, महेन्द्र सेकेण्डरी स्कूलबाट जारी भएको चारित्रिक प्रमाणपत्र, नागरिकता प्रमाण पत्र लिनको लागि भरिएको अनुसूची फारम, नागरिकता प्रमाणपत्र तथा २०७९/०३/१४ मा तादी गाउँपालिकाबाट प्रदान भएको जन्मदर्ताको प्रमाणपत्रको प्रतिलिपिमा पीडितको जन्म मिति २०६२/०२/१८ उल्लेख भएको देखिए तापनि नारायणी उपक्षेत्रिय अस्पतालको डेलिभरी रजिष्ट्रमा बच्चाको नाम उल्लेख नहुने गरेको भन्ने देखिई बच्चा जन्माउने आमाको पुरा नामथर वतन उल्लेख रहेको देखिदैन। उक्त विवरणमा बच्चा जन्मेको मिति २०६१/०२/१८ उल्लेख भएको देखिन्छ। तर आमाको नाम उल्लेख भएको देखिएको, जाहेरवाला (पीडितका दाजु) ले अदालतमा बकपत्र गर्दा पीडित र मेरो जन्म वीरगंजमा भएको भनी उल्लेख गरेको र स्वयम् पीडितले प्रतिवादीसँग कुरा गर्दा आफ्नो जन्म वीरगंजमा भएको भन्ने प्रतिवादीको मौकाको भनाई देखिंदा पीडितको जन्म वीरगंजमा भएको भन्ने तथ्य पुष्टि हुन्छ।

६७) यसका साथै शंखरापुर नगरपालिकाको कार्यालय, काठमाडौंको बसाई सराई दर्ता किताव, तादी गा.वि.स. नुवाकोटको बसाई सराई दर्ता रजिष्टर, तादी गाउँपालिका वडा नं. २ को कार्यालयको पत्रसाथ प्राप्त बसाई सराईको सूचना फारम, शंखरापुर नगरपालिकाको कार्यालयबाट जारी भएको बसाइ सराई दर्ता प्रमाण पत्र समेतमा पीडितको जन्म मिति २०६१/०३/१८ भन्ने उल्लेख भएको देखिन्छ। उल्लिखित कार्यालयहरुबाट जारी भएका उल्लिखित लिखतहरु कानूनी प्रकृया बमोजिम अन्यथा हुन सकेको नपाईदा प्रमाण ऐन, २०३१ को दफा ६(ग) र (ङ) को कानूनी व्यवस्था बमोजिम पीडितको उमेर पुष्टि गर्ने कानूनी प्रमाणको रुपमा ग्रहण गर्नु पर्ने अनिवार्यता देखिन्छ। पछि लिएको जन्म मितिको प्रमाण पत्रको प्रतिलिपिमा पीडितले आफ्नो जन्म मिति २०६२/०२/१८ उल्लेख गरे तापनि

यस अघि कानून बमोजिम गठन भएका आधिकारीक निकायबाट जारी भएका लिखतहरु अन्यथा हुन नसकेकोले पीडितले एस.ई.ई. को ग्रेड सिटमा उल्लेख भएको जन्म मितिसँग मिलान हुने गरी पछि लिएको जन्मदर्ताको प्रमाणपत्र अघि जारी भएको प्रमाणपत्रमा उल्लिखित जन्म मिति भन्दा फरक उल्लेख भएपनि पहिले लिएको जन्म मितिलाई बालबालिका सम्बन्धी ऐन, २०७५ को दफा ८३ को कानूनी व्यवस्था बमोजिम क्रमबद्धताको आधारमा स्थानीय पञ्जिकाधिकारीको कार्यालयबाट जारी भएको जन्म दर्ताको आधारमा पीडितको जन्म मिति २०६१/०३/१८ नै कायम हुने भई सोही आधारमा वारदात भएको भनिएको दिन मिति २०७९/०५/०५ मा पीडित १८ वर्ष उमेर पुरा भएको देखिई सावालक ठहर गरेको शुरु काठमाडौं जिल्ला अदालतको फैसला मिलेकै देखिंदा पीडित वारदातको दिन नाबालक रहेको ठहर गरी पाउँ भन्ने वादी नेपाल सरकारको पुनरावेदन जिकिरसँग नेपाल कानून पत्रिका २०७१ अंक १० नि.नं. ९२५७ मा प्रतिपादित सिद्धान्त समेतका आधारमा सहमत हुन सकिएन।

६८) अब, पीडित साबालक ठहर भएपनि प्रतिवादीले पीडितलाई जबरजस्ती करणी गरेको कसूर गरेको ठहऱ्याई सजाय गरेको शुरु काठमाडौं जिल्ला अदालतबाट भएको फैसला उपर आरोपित कसूरबाट सफाई पाउँ भन्ने प्रतिवादीको पुनरावेदन जिकिर रहेकोले सो तर्फ विचार गर्दा, प्रतिवादी उपर पीडितको दाजु परिवर्तित नाम गौशाला २६(छ)(०७९/०८०) ले दिएको जाहेरीमा प्रतिवादीले पीडितसँग बिभिन्न बाहानामा नजिक हुन खोज्ने, भेट्न बिभिन्न प्रयास गर्दा पनि पीडितले अनिच्छा गर्दा गर्दै पनि आफू २ महिनाको लागि क्रिकेट खेल्न विदेश जाने हुँदा भेटी सँगै घुम्न जाउँ भनी प्रस्ताव गरी मिति २०७९/०५/०५ गते १९:०० बजे भेटी प्रतिवादीको गाडीमा राखी पीडितले कहाँजान लागेको भनी सोध्दा केही नभनी पीडितको मन्जुरी विना नगरकोट वोजिनी रिसोर्टमा रातको २०:२० बजेमा पुऱ्याई सोही होटलको भिआईपि कोठामा बुक गर्दा पीडितले बस्न नमानेकोले काठमाडौं पुगी होस्टेलमा जान नमिल्ने हुँदा होटल काठमाडौं इनमा २ वटा कोठा लिनु भनी पीडितले भन्दा प्रतिवादीले पिङ्गला स्थान स्थित होटल काठमाडौं इनको कोठा नं. ३०५ बुक गरी राति ००:२५ बजे र सो को १ घण्टा पछि एक पटक जबरजस्ती करणी गरी बिहान दुवै होटेलबाट निस्की पीडितलाई होस्टेल अगाडि छोडी फरार भएकोले कारवाही गरिपाउँ भनी उल्लेख भएको देखिन्छ। अदालतमा समेत बकपत्र गर्दा मौकाकै जाहेरी व्यहोरा उल्लेख गरेको देखिन्छ।

६९) पीडितको मौकाको कागज हेर्दा, क्लोज क्यापमा सन्दिप र देव खनालसँगै बसेको फोटो देव खनालले पठाएपछि मैले सन्दिप लामिछानेलाई फ्रेण्ड रिक्वेस्ट पठाएकोमा निजले रिक्वेस्ट एसेप्ट गरेपछि निजसँग मेरो घरायसी अवस्थाको बारेमा कुरा गर्दा निजले मलाई भेट्ने इच्छा गरेकोमा मैले फुर्सद हुन्न भन्दा २०७९ साल भदौ ६ गते बेलुका ६ बजे केन्याको फ्लाईट

भएकोले केन्या गई त्यहाँबाट क्यारेबियन प्रिमियर लिग खेल्न जानु पर्ने भई २ महिना पछि मात्र नेपाल फर्कने हुँदा आजै भेटौ भनी फोन गरेकोमा मैले तत्काल फोन उठाउन नपाई पछि कल ब्याक गर्दा अर्कै व्यक्तिले फोन उठाएकोले मैले वास्ता नगर्दा पछि फेरी निजले फोन गरी भेट्न आउछु भनेकोले **मैले भेट्ने ठाउँमा बोलाई** निज आएपछि निजको गाडीमा बसेपछि निजलाई कहाँ जाने भन्दा मेरो मन्जुरी वेगर राति २०:२० बजे वोजिनी रिसोर्टमा पुऱ्याई कोठा बुक गर्छु भन्दा मैले नमानी २२:४५ बजे काठमाडौं पुग्दा राति होस्टेलमा जान नमिल्ने हुँदा निजसँग कोठामा गई ३०५ नं. कोठामा गई लुगा नफुकाली सुतेकोमा राति ००:२५ बजे निजले मेरो लुगा फुकाली मेरो इच्छा विपरीत जबरजस्ती करणी गरी शरीरमा वीर्य झारीदिएको र सो को १ घण्टा पछि पुनः जबरजस्ती करणी गरेपछि बिहान ७ बजे मेरो होस्टेलमा छोडी फरार भएका हुन् भन्ने उल्लेख गरेकोमा अदालतमा समेत मौकाकै व्यहोरा उल्लेख गरी बकपत्र गरिदिएको पाइन्छ।

७०) प्रतिवादीले अधिकार प्राप्त अधिकारी समक्ष बयान गर्दा सन् २०१६ देखि आफू क्रिकेटको अन्तराष्ट्रिय खेल खेल्दै हाल क्रिकेटको कप्तानको जिम्मेवारी सम्हाल्दै आएको छु।हाम्रो क्रिकेट खेलको खेलाडी देव खनाल र यी पीडित भनिएकी परिवर्तित नाम गौशाला २६ (छ)(१)(०७९/०८०) बीच चिनजान रहेछ।देव खनालले मसँग खिचेको फोटो पीडित भनिएकीलाई पठाएका रहेछन्, सो पछि निजले मलाई स्न्याप च्याटमा फ्रेण्ड रिक्वेस्ट पठाए पछि देव खनालको साथी भएको थाहा भएकोले मैले स्वीकार गरेको हो। निजले पछि केही भिडियो र फोटो समेत पठाउने गरिकी थिइन्।यसै बीचमा निजले म तपाईको फ्यान हुँ, भेट्ने इच्छा छ भनेकीले मसँग समय छैन करिव २ महिना पछि खेल सक्काएर फर्किए पछि भेट्छु भन्दा स्न्याप च्याट मार्फत म्यासेज गरी भेट्न कर गरेकी र मेरो दयनिय स्थिति भएकोले केही सहयोग गर्नुस भनेकीले र सहयोग भन्दा म भेटेर कुरा गर्छु भनेकोले फुर्सद हुँदा भेटौला भनेको र मिति २०७९/०५/०५ गते साँझ अन्दाजी १६:०० मा मैले फोन गरेकोमा निजले पुनः भेट्ने भनेकाले आज व्यस्त छु भन्दा काम सकाएर आउनु भनेकोले म अन्दाजी ७:०० बजे गई निजलाई भेटेपछि निजले नगरकोट जाउँ भनेकीले त्यहाँ जान सम्भव छैन बरु दरवारमार्ग तिर कफी खाउ भन्दा मैले बिहानदेखि नगरकोट जाने मुड बनाएको छु भनेपछि भोली केन्या जानु पर्छ सम्भव छैन भन्दा मैले होस्टेलका साथीहरुलाई पनि नगरकोट जान्छु भनिसकेको हुँदा नगरकोट नै जाने भनेकीले खाजा मात्र खाएर फर्कने शर्तमा नगरकोट गएको र बाटोमा निजले आफू १२ कक्षामा अध्ययनरत रहेको र १९ वर्षमा चलिरहेको भनेकी थिइन।नगरकोट जाँदा ढिला हुन्छ फेरी तिम्रो होस्टेल बन्द हुन्छ भन्दा मेरो होस्टेल जतिबेला पनि खुल्छ भनेकी थिइन।हामी नगरकोटमा बस्ने योजना नभएकोले कहिलेकाही साथीहरुसँग र कहिलेकाही परिवारसँग जाने हुँदा नगरकोटको वोजिनी रिसोर्टमा पूर्व जानकारी नगराई होटलमा गई खाजा खाई रहेकोले अब ढिला भयो होस्टेल

बन्द हुन्छ पुऱ्याउनु पर्छ भन्दा होस्टेल बन्द हुँदैन ढिला भए यतै बसौला भनेकीले भोली मेरो तयारी गर्नु छ हुँदैन भनेपछि २३:०५ बजे होटलबाट फर्की बाटोमा आउँदा निजले मेरो होस्टेल बन्द भईसकेको भनेकी र सोही बखत निजको मोबाईलमा फोन आएकोले फोन नउठाई म्यासेज मार्फत आफ्नो साथीलाई He dropped me at my friend's place and I am safe. I will come tomorrow morning भनी म्यासेज लेखपछि अघि होस्टेल जतिबेला पनि खुल्ला हुन्छ भनी किन झुठ बोलेको भनी भन्दा केही होइन होस्टेलबाट फोन आई म साथीकोमा बस्छु भन्छु होस्टेल बाहिरबाट फोन आए म होस्टेलमा छु भन्छु चिन्ता लिनु पर्दैन भनी मसँग धेरै कुरा गर्न बाँकी छ भनेकीले मसँग बसेको हायात होटलमा जाउँ एउटा कोठा मिलाइदिन्छु भन्दा त्यहाँ देव खनाल पनि हुन्छन् भनी जान आनाकानी गरेकीले म हायात होटलमा जानु पर्छ कहिलेकाही हामी क्याम्पको लागि बस्ने गरेको होटल काठमाडौं इनमा फोन गरी एउटा कोठा मिलाइदिन्छु भनेपछि निजले हुन्छ भनेकीले सो होटलमा एउटा कोठा बुक गरी होटल पुऱ्याउन जाँदा म गाडी पार्किङ गरेर जाँदा ४०७ नं. को कोठाको साँचो लिएर गईसकेकी रहेछिन्। म पछि जाँदा सो कोठाको एसी बिग्रिएको भनेकोले पछि ३०५ नं. को कोठामा बसी निजसँग कुरा गर्न लाग्दा निज आफैले कोठा भित्रबाट बन्द गरी भित्र बस्दा खेलकुद सम्बन्धी कुरा गरी मेरो व्यक्तिगत जिवनको बारेमा कुरा गर्दा मेरो गलफ्रेण्ड छ, १/२ वर्षमा विवाह गर्छु भनेकोमा पीडितले मेरो जन्म वीरगंजमा भएको, घर नुवाकोट हो, हाल म होस्टेलमा बसी पढ्ने गरेको छु। बाबुआमाको सम्बन्ध विच्छेद भएकोले घरको आर्थिक स्थिति राम्रो नरहेकोले राम्रोसँग पढ्न पाएको छैन। मलाई सहयोग गर्नुहोस भनेकोले ठिकै छ, मैले गर्न सक्ने सहयोग गरौला भनेको हो। निजले जन्म मिति घटाई पछि जन्म दर्ता बनाएको छु भनेकी थिइन्। त्यसपछि ३:४५/४:०० बजे तिर मलाई शंका लागि म अहिले होटल जान्छु तिमीलाई बिहान होस्टेल पुऱ्याउन आउला भन्दा अहिले नजानु अब १ घण्टा पछि म पनि जाने बेला हुन्छ अर्को कोठामा गई सुत्छु भन्दा मलाई डर लाग्छ भनेकीले म त्यही मेचमा बसेर निदाएछु। पछि बिहान ६ बजे बिउँझिदा निज बेडमा सुतेको देखी बोलाए पछि ब्रेकफास्ट लिन्छौ ? भन्दा लिन्न भनेकीले गाडीमा राखी निजको होस्टेल नजिक छाडी सोही दिन साँझ क्रिकेट खेल्न केन्या तर्फ गएको हो। केन्या गएपछि निजसँग सम्पर्क भएको थिएन। पछि सामाजिक सञ्जाल मार्फत मिति २०७९/०५/२२ गते निजको दाजुले म उपर जबरजस्ती करणीको मुद्दाको जाहेरी दिएको थाहा पाएको हुँ। निजलाई जबरजस्ती करणी गरेको होइन भनी मुल रुपमा आरोपित कसूरमा इन्कार रहेको पाइन्छ। त्यसै गरी अदालतमा बयान गर्दा मौकाको व्यहोरा उल्लेख गरी कसूरमा इन्कार रहेको र निजको इन्कारीलाई समर्थन हुने गरी निजका साक्षी सलिना शर्मा लामिछाने, पृथ्वीराज पोखरेलसमेतले शुरु अदालतमा बकपत्र गरिदिएको देखिन्छ। पीडितकै भनाई मात्र कसूर ठहर गर्ने प्रमाण हुन नसक्ने अन्य स्वतन्त्र प्रमाणले पीडितको भनाई पुष्टि हुनु पर्ने (ने.का.प.

२०७६, नि.नं. १०१७२) भन्ने पनि सिद्धान्त प्रतिपादन भएको देखिन्छ। त्यसै गरी आरोपित कसूरमा साबित हुनु र सम्बद्ध तथ्य स्वीकार गर्नु फरक हुने, तथ्यको स्वीकारोत्तीलाई साबिति सरह प्रमाणमा लिन नमिल्ने ( ने.का.प. २०६३, नि.नं. ७६६४ पृ. ३३०) भन्ने सिद्धान्त समेत प्रतिपादन भएको पाईन्छ।

७१) मौकामा बुझिएका होटल काठमाडौं इनका सुरक्षाकर्मी राजन राणाले पीडित र प्रतिवादी राति होटलमा आएको भनेको र सोही होटलका सुरक्षाकर्मी बाबुकाजी थापाले होटलबाट बिहान गएको व्यक्ति प्रतिवादी सन्दिप लामिछाने र पीडित गौशाला २६(छ)(१)(०७९/८०) रहेको थाहा पाएको भनेको, सोही होटलबाट वेटर सबिन श्रेष्ठले सन्दिप लामिछाने र पीडित होटलको कोठा नं. ४०७ मा बसेको पछि थाहा पाएको भनेको, सन्दिप लामिछानेले मलाई एउटा कोठा चाहियो भनेकाले कोठा सफा गर्न लगाएको र होटलमा सन्दिप लामिछाने र पीडित स्वफूर्त रुपमा कोठामा बसेको भनी सोही होटलका रिसेप्सनिष्ट अनिष श्रेष्ठले भनेको, सन्दिप लामिछाने र पीडितले होटलमा खाजा खाई २२:३२ मा रु.२७३५ तिरी हिडेको भनी होटल वोजिनी, नगरकोटका सुपरभाइजर समिर पुरीले भनेको, प्रतिवादी र पीडित कोठा नं. ३०५ मा बसेको भनी होटल काठमाडौं इनका संचालक सन्तोष अधिकारी, लाल बहादुर बानियाको व्यहोरा, सन्दिप लामिछाने र म निजको गाडी बनाई फर्कदा निजको स्न्याप च्याटमा मेसेज आएकोले निजले गाडी चलाई राखेकोले मैले फोन गर्दा को हो भन्दा ? फोन काटेकोले पछि मैले फोन गर्दा सन्दिपले कुरा गरेको र हामी हायात होटलमा गई बसेकोमा पछि सन्दिप कता गएको थाहा नभएको भन्ने क्रिकेट खेलाडी साहव आलमको व्यहोरा एवम् पीडितसँग कुरा भएको, निजले तपाईको फ्यान भएको भनेको, होटलको क्लोज क्यापमा बस्दा सन्दिपले गिटार बजाउँदै गित गाएको भिडियो पीडितलाई पठाइदिएको हो। मैले प्रत्यक्ष रुपमा नदेखेको, क्रिकेट खेल्न सन्दिपसँग केन्या गएको बेलामा सन्दिपको गाडीको फोटो पीडितले पठाइदिएको थिइन्। पछि सोसल मिडिया मार्फत यो विषयमा थाहा पाएको भन्ने क्रिकेटर देव खनालको व्यहोरा, मिति २०७९/०५/०५ गते बिहान पीडितले कलेज जान्छु भनी होस्टेलबाट गएकोमा बेलुका सम्म नआएकोले फोन गर्दा सम्पर्क नभएको, कलेज जाँदा होस्टेलमा कसैलाई सोध्नु पर्ने चलन नभएको, पछि सम्पर्क गर्दा होस्टलमा नबसी बाहिर बस्छु भनेकी थिइन्। २०७९ साल भाद्र महिनाको २२/२३ गते तिर सन्दिप उपर होस्टलमा बस्ने नाबालिकाले जबरजस्ती करणी मुद्दा दिएको थाहा पाएको भन्ने होस्टल संचालक नारायण बहादुर बलामीको व्यहोरा, पीडितलाई प्रतिवादीले जबरजस्ती करणी गरेको भनी पीडितले भनेको भन्ने प्रकृति गिरीले सोही व्यहोराको, पवन ढुंगानाको कागज गर्दा आफ्नो व्यहोरा लेखाई दिएकोमा अदालतमा प्रकृति गिरी, पवन ढुंगाना, राजन राणा, ईन्द्र बिक्रम थापा, सबिन श्रेष्ठ, लाल बहादुर बानिया, नारायण बहादुर बलामी, बाबुकाजी थापा,

सन्तोष प्रसाद अधिकारी, समिर पुरी, देव खनाल, साहव आलमले अदालतमा समेत बकपत्र समेतबाट यी प्रतिवादीले आरोपित कसूर गरेको भन्ने पुष्टि भएको देखिदैन।

७२) पीड ीतको स्वास्थ्य परीक्षणमा hymen old tear at 7 o'clock position भन्ने उल्लेख भएको देखिन्छ। परीक्षणको क्रममा पीडितको mental state सामान्य रहेको पुरानो खत ७ से.मी. ०.५ से.मी. दाहिने तिघ्राको पछाडी भागमा रहेको थियो।कन्या जाली च्यातिएको ७२ घण्टा पछि पुरानो मानिन्छ।पीडितको उमेर १७ वर्ष खुलाईएको हुँदा पीडितको उमेर जाँच गर्न सिफारिस गरेका हौ भनी डा. अनामिका झाले अदालतमा बकपत्र गरिदिएको देखिन्छ।यसै गरी Sexual Activity पीडितको बयान अनुसार लेखिएको हो र यो पत्ता लाउने कुनै विधि हुँदैन।योनाङ्गको घाउँचोट २ पटक जबरजस्ती करणी गरेको हुँदा फरक पर्न पनि सक्छ, फरक नपर्न पनि सक्छ भन्ने पीडितको स्वास्थ्य परीक्षण प्रतिवेदन गर्ने चिकित्सक डा. मनिषा यादवले बकपत्र गरिदिएको पाइन्छ।

७३) प्रतिवादी उपरको अभियोग दावी मुलुकी अपराध संहिता, २०७४ को दफा २१९ को उपदफा १ मा "कसैले जबरजस्ती करणी गर्नु हुँदैन" भन्ने र ऐ. को उपदफा २ मा "कसैले कुनै महिलालाई निजको मन्जुरी नलिई करणी गरेमा वा मन्जुरी लिएर भए पनि १८ वर्ष भन्दा कम उमेरको कुनै बालिकालाई करणी गरेमा निजले त्यस्तो महिला वा बालिकालाई जबरजस्ती करणी गरेको मानिने छ" भन्ने र स्पष्टिकरण (क) मा " करकाप, अनुचित प्रभाव, डर त्रास, झुक्यानमा पारी वा अपहरण गरी वा शरीर बन्धक लिई लिएको मन्जुरीलाई मन्जुरी मानिने छैन" भन्ने कानूनी व्यवस्था रहेको पाइन्छ।प्रस्तुत मुद्दामा पीडित वारदात हुँदाका अवस्था उमेर पुगेकी साबालक ठहर भएको शुरु फैसला उपर वादी नेपाल सरकारको परेको पुनरावेदनमा सदर हुने भनी माथि निर्णयमा बोली सकिएको छ।

७४) प्रस्तुत मुद्दामा हेर्दा, पीडित बाहेक अन्य चस्मदित (तत्काल घटनाका बारेमा देख्ने र सुन्ने) व्यक्ति कोही देखिदैन। जाहेरवालाले पीडितले भने बमोजिम वारदातमा तत्काल उजुर नगरी प्रतिवादी क्रिकेट खेलमा भाग लिन केन्या गएपछि प्रतिवादीसँग पीडितको सम्पर्क नभएपछि जाहेरी परेको अवस्था देखिन्छ। पीडितले घटनाक्रम उल्लेख गरी २ पटक जबरजस्ती करणी गरेको भन्ने मौकाको कागजमा उल्लेख गरेको र अदालतमा समेत करिव सोही व्यहोराको बकपत्र गरेको र वारदातको १५ दिन पछि पीडितको स्वास्थ्य परीक्षण गराउँदा पीडितले मौकामा कागज गर्दा आफ्नो शरीरमा चोट पटक भएको, कुनै पुरानो चोटपटक भएको भनेकोमा उक्त वारदातबाट कुनै चोटपटक रहेको भन्ने पनि स्वास्थ्य परीक्षण प्रतिवेदनबाट देखिदैन। चिकित्सकको बकपत्रबाट वारदातको समयमा प्रतिवादीले पीडितको शरीरमा वीर्य झारेको भनेको कपड ा, प्रतिवादीको वीर्य परीक्षण समेत भएको देखिदैन। पीडितको स्वास्थ्य परीक्षण प्रतिवेदनमा hymen old tear at 7 o'clock position भन्ने उल्लेख भएको देखिए तापनि पीडितको स्वास्थ्य परीक्षण प्रतिवेदन मात्र कसूर ठहर हुने अकाट्य

प्रमाण हुन सक्ने देखिदैन। सोलाई अन्य स्वतन्त्र प्रमाणले पनि पुष्टि हुन जरुरी हुने भनी सम्मानित सर्वोच्च अदालतबाट सिद्धान्तसमेत प्रतिपादन भएको (ने.का.प २०७६ नि.नं. १०१७२) मा पाइन्छ। प्रतिवादीले अधिकार प्राप्त अधिकारी र अदालतमा बयान गर्दा पीडितले उल्लेख गरेको घटना विवरणलाई स्वीकार गरेपनि निजले दावी गरिएको कसूरमा पूर्णरुपले इन्कार गरेको पाईन्छ। प्रस्तुत मुद्दामा पीडितसँग होस्टलमा एउटै कोठामा बस्ने प्रतिवादीका साक्षीको रुपमा बकपत्र गर्ने सविना लामिछानेले जाहेरी दिएपछि आफूलाई १०/१५ लाख आइहाल्छ अनि मेरो समस्या समाधान हुन्छ भनी पीडितले टेलिफोनमा कुरा गर्ने व्यक्तिलाई भनेको भनी आफ्नो बकपत्रमा उल्लेख गरेकोले पीडितको रुम पार्टनरले पीडितको नालीबेली उल्लेख गर्दै वास्तविक कुरा उजागर गरी बकपत्र गरिदिनु पर्ने अन्य कुनै कारण मिसिल संलग्न कुनै कागज प्रमाणबाट पुष्टि भएको देखिदैन।

७५) मौकामा बुझिएका प्रकृति गिरी र पवन ढुंगानाको कागज, होटल काठमाडौं इनका सुरक्षाकर्मी राजन राणा, बाबुकाजी थापा, होटलका वेटर सबिन श्रेष्ठ, रिसेप्सनिष्ट अनिष श्रेष्ठ, वोजिनी रिसोर्ट नगरकोटका सुपरभाइजर समिर पुरीको कागजसमेतबाट प्रतिवादीले कसूर गरेको भन्ने जिल्ला अदालतको फैसलाको निर्णयाधारमा उल्लेख गरेको सम्बन्धमा हेर्दा, प्रतिवादी स्वयंले नगरकोट गएको, होटल इनमा बसेको तथ्य स्वीकारी रहेको अवस्थामा निजहरुको मौकाको भनाईले प्रतिवादीले नै उल्लेख गरेको व्यहोरा पुष्टि भएको छ। तथापि सोही भनाईले प्रतिवादीले पीडितलाई करणी गरेको भनी परिस्थितिजन्य प्रमाणको रुपमा शुरु अदालतले ग्रहण गरेपनि सो स्वतः अनुमान गर्न मिल्ने नभई परिस्थितिजन्य प्रमाणको आधारमा ठहर गर्ने आधार विन्दु र सम्बद्ध तथ्यको कडि एकआपसमा एकबद्धरुपले आवद्ध एवम् गाँसिएको हुनु पर्छ, सो गाँसिएको प्रमाणको कडि (chain of evidence) मा कुनै छुट हुनु हुँदैन, एउटा तथ्यसँग अर्को तथ्य अन्योन्याश्रित हुनु अपरिहार्य हुन्छ भन्ने सम्मानित सर्वोच्च अदालतबाट प्रतिपादित सिद्धान्त (ने.का.प. २०४८ नि.नं. ४२८७ पृ.१८६) बमोजिम प्रस्तुत मुद्दामा प्रतिवादी उपरको कसूर वस्तुनिष्ठ रुपमा ठहर हुने त्यस्तो शंका रहित प्रमाणको क्रमबद्धता रहेको देखिदैन।

७६) पीडित आफैले प्रतिवादीलाई फ्रेण्ड रिक्वेष्ट पठाएको, प्रतिवादीलाई स्न्याप च्याट मार्फत फोटोहरु पठाउने गरेको, प्रतिवादीले आफू क्रिकेट खेल्न विदेश गई २ महिना पछि फर्केर आई भेट्छु भन्दा पीडितले मलाई सहयोग गर्नु पर्‍यो भनेर प्रतिवादीसँग तुरुन्तै भेट्न चाहेको, प्रतिवादीले गाडी लिएर आउँदा स्वफूर्त रुपमा पीडित प्रतिवादीको गाडीमा गई बसेको, नगरकोट जाँदा समेत पीडितले कुनै प्रतिकार नगरेको र प्रतिवादीले नगरकोटबाट पीडितलाई चाँडै जाउँ तिम्रो होस्टेल बन्द हुन्छ भन्दा होस्टेल जुनसुकै बखत पनि खुल्ला हुन्छ भनी प्रतिवादीलाई विश्वास दिलाएको, नगरकोटको होटेल प्रतिवादीले वुक गराएको भन्ने तथ्य पुष्टी नभएको र पछि आउँदा मेरो होस्टेल बन्द भईसकेको भनेकोले प्रतिवादीले म तिमीलाई एउटा

होटलमा एउटा कोठा लिई दिन्छु म क्लोज क्याम्प रहेको होटलमा साथीहरुसँग बस्न जानुपर्छ भन्दा पीडितले नमानी आफूलाई एक्लै नछोड्नु भनी जिकिर गरेको, दुवै जना स्वफूर्त रुपमा नगरकोटको वोजिनी होटलबाट काठमाडौं फर्केको, होटल काठमाडौं इनमा दुवै जना बसेको, होटल प्रवेश गरेदेखि होटलबाट निस्केको बखत सम्म पीडित र प्रतिवादीबीच कुनै झगडा मनमुटाव नभई पीडितले सहमति बमोजिम नै सम्पूर्ण घटनाक्रम भएको तथ्यलाई अन्यथा मान्नुपर्ने देखिदैंन।

७७) अब उल्लिखित अन्य तथ्यहरुलाई एकातिर पन्छाएर पीडितको कागज एवम् बकपत्र, स्वास्थ्य परीक्षण प्रतिवेदनलाई एकोहोरो रुपमा ग्रहण गरेर हेर्ने हो भने पनि पीडित उमेर पुगेकी महिला भएको भनी शुरु अदालतबाट र माथिका प्रकरणहरुमा विवेचित आधार कारणबाट ठहर भएको अवस्था छ।

७८) पीडितले प्रतिकार गरेको, कराएको, चिच्चाएको, तेस्रो व्यक्तिसँग आत्मरक्षाको लागि कुनै सहयोगको याचना गरेको भन्ने नदेखिएको तथ्यलाई वोजनी होटल नगरकोटका सुपरभाइजर समिर पुरी, होटल इनका सुरक्षाकर्मी राजन राणा, बाबुकाजी थापामगर, होटल इनका वेटर सबिन श्रेष्ठ, रिसेप्सनिष्ट अनिष श्रेष्ठको कागज र बकपत्रबाट समेत उक्त होटेलमा जान पीडितको सहमति रहेको पुष्टि भएको छ। उमेर पुगेका व्यक्तिहरु बीच जबरजस्ती करणीको १ नं विपरीत नभै सहमतिमा भएको करणीलाई जबरजस्ती करणी नमानिने (ने.का.प. २०७०, नि.नं. ९०७५,पृ १३४५),(ने.का.प. २०७२, नि.नं. ९३३५) भन्ने सम्मानित सर्वोच्च अदालतबाट प्रतिपादित सिद्वान्तलाई प्रस्तुत मुद्दाको उल्लिखित तथ्यहरुले अनुमोदन गरेको देखिन्छ। पीडितले प्रतिवादीले आफूलाई जबरजस्ती करणी गरेको भने पनि निज वारदातको समय १८ वर्ष पुरा भएको देखिएकोले अभियोग दावीको मुलुकी अपराध संहिता, २०७४ को दफा २१९ को उपदफा (२) को मन्जुरी नलिई करणी गरेको पुष्टि भएमा कसूर ठहर हुने कानूनी व्यवस्था भएको परिप्रेक्ष्यमा पीडितको Consent थियो थिएन भन्ने सम्बन्धमा Modi's Medical Jurisprudence मा उल्लिखित व्यवस्था यहाँ उल्लेख गर्नु सान्दर्भिक देखिन्छ। *"Consent must be conscious, free and voluntary and given while she is full possession of her faculties. Consent should also have been obtained prior to the act. It is no defence that the consent was given after sexual connection"* भन्ने उल्लेख भएको पाईन्छ। उल्लिखित व्यवस्था बमोजिम पीडित सचेत अवस्थामा रहि स्वफूर्त रुपमा दिएको हुनु पर्ने काम हुने भन्दा पहिले सहमति दिएको हुनुपर्ने भन्ने नै बुझिन्छ। प्रतिवादीसँग पीडितले आर्थिक संरक्षण मागेको प्रतिवादीले पछि सकेको सहयोग गर्छु भनेको तर कुनै सहयोग नगरी प्रतिवादी केन्या तर्फ गएको घटनाक्रमले रिसको आवेगमा प्रतिवादी उपर यस्तो जघन्य कसूरमा जाहेरी दिएको होला भनी यो तथ्यलाई ठाडै इन्कार गर्न सकिने अवस्था पनि देखिदैन।

७९) प्रमाण ऐन, २०३१ को दफा २५ मा फौजदारी मुद्दामा आफ्नो अभियुक्त उपरको कसूर प्रमाणित गर्ने भार वादीको हुने भन्ने कानूनी व्यवस्था भएको परिप्रेक्ष्यमा माथि उल्लेख गरिएका प्रस्तुत मुद्दाका तथ्यहरु, सम्मानित सर्वोच्च अदालतबाट प्रतिपादित सिद्धान्तसमेतको आधारमा प्रतिवादी उपरको जाहेरवालाको जाहेरी एवम् बकपत्र, पीडितको कागज एवम् बकपत्र, प्रतिवादीले अभियोग दावीको कसूर गरेको अकाट्य प्रमाणको रुपमा मान्न मिल्ने नदेखिएको, पीडितको स्वास्थ्य परीक्षण प्रतिवेदन, घटनास्थल प्रकृति मुचुल्का, वारदात स्थलमा भएको वस्तुहरु वेड, तन्ना, टिस्यू पेपर, पीडित गौशाला २६ (छ)(१)(०७९/०८०) ले लगाएको भित्री, वाहिरी कपडाहरुको समेत परीक्षण एकातर्फ भएको छैन भने अर्का तर्फ ती प्रमाणहरुले अभियोगदावी समर्थित हुने कुनै आधार पनि नदेखाएको, गौशाला २६ (छ)(१)(०७९/०८०) ले अदालतमा बकपत्र गर्दा निजलाई तपाईले I just hugged Sandeep Lamichhane the day before yesterday लेखी प्रशन्न मुद्राको ईमोजी समेत राखेको सम्बन्धमा सो म्यासेज कसलाई गर्नुभएको हो र सो म्यासेजको मतलव बताईदिनुहोस् भनी सोधनी हुँदा मेरो प्रतिवादी सन्दिप लामिछाने मैले आईडियलाईज्ड गरेको व्यक्ति भएको र उक्त Text एकजना चिनेको दाईसँग कुराकानी गर्ने क्रममा मैले भनेकी थिए भन्ने व्यहोरा लेखाएको तथा मिसिल संलग्न CCTV footage को script समेतका प्रमाणबाट अभियोग दावी शंकारहित तवरले पुष्टि नभएको, पीडित र प्रतिवादीबीच पीडितको होस्टल नजिकबाट प्रतिवादीको गाडीमा बसी नगरकोट गएको, रातको समयमा काठमाडौं होटल इनमा बसी भोलिपल्ट प्रतिवादीले पीडितलाई निजको होस्टलमा पुऱ्याउँदाका अवस्था सम्मका उल्लिखित घटनाक्रमलाई विष्लेषण गरी हेर्दा जबरजस्ती करणीको कसूर भएको मान्न मिल्ने अवस्था नदेखिई प्रतिवादीलाई पीडित साबालक ठहर गरी जबरजस्ती करणी गरेको ठहऱ्याई काठमाडौं जिल्ला अदालतबाट भएको फैसला सो हदसम्म मिलेको देखिन आएन।

८०) अतः माथि विवेचित आधार, कारणसमेतबाट यसमा प्रतिवादी सन्दिप लामिछानेले अनुसन्धानका क्रममा र अदालतमा गरेको इन्कारी वयान, परिवर्तित नाम गौशाला २६(छ)(१) (०७९/०८०) ले पठाएको म्यासेज, निजको शारीरिक परीक्षण प्रतिवेदन, निजको शारीरिक अवस्था, घटनास्थल मुचुल्का, घटना विवरण कागज गर्ने होटल काठमाडौं इन होटलका सेक्यूरीटि गार्ड राजन राणाले गरेको बकपत्रका साथै मिसिल संलग्न परिस्थितिजन्य प्रमाणहरु समेतबाट पुनरावेदक प्रतिवादीले अभियोग मागदावी बमोजिमको कसूर गरेको पुष्टी हुन नआएकोले निज प्रतिवादीलाई मुलुकी अपराध संहिता, २०७४ को दफा २१९(३)(ङ) बमोजिम ८ वर्ष कैद ऐ ऐ को दफा ३(क)(ग) बमोजिम रु.३,००,०००।—(तीन लाख) जरिवाना र ऐ को दफा २२८ बमोजिम थप समेत गरी रु. ५,००,०००।— (पाँच लाख) क्षतिपूर्ति समेत भरिपाउने गरी शुरु काठमाडौं जिल्ला अदालतबाट मिति २०८०/०९/१३ गते कसूर निर्धारण भई मिति २०८०/०९/२५ गते

सजाय निर्धारण गर्ने गरी भएको फैसला मिलेको नदेखिंदा उल्टी बदर भई निज प्रतिवादी उपरको वादी नेपाल सरकारको अभियोग मागदावी पुग्न नसकी प्रतिवादीले आरोपित कसूरबाट सफाइ पाउने ठहर्छ। परिवर्तित नाम गौशाला २६(छ)(१)(०७९/८०) लाई नाबालक कायम गरी अभियोग मागदावी बमोजिम सजाय समेत गरि पाउँ भन्ने वादी नेपाल सरकारको पुनरावेदन जिकिर समेत पुग्न सक्दैन। अरुमा तपसिल बमोजिम गर्नू ।

<u>तपसिल खण्ड</u>

१) पुनरावेदक प्रतिवादी सन्दिप लामिछानेले माथि इन्साफ खण्डमा लेखिए बमोजिम निजका हकमा निजले अभियोगको कसूरबाट सफाई पाउने ठहरेकाले उच्च अदालत पाटनको मिति २०७९/०९/२८/५ को आदेश श्री काठमाडौं जिल्ला अदालतमा र.नं. १७८९ मिति २०७९/०९/२९ मा रु.२०,००,०००/-(बीस लाख रुपैयाँ) धरौटी राखी मुद्दा पुर्पक्ष गरेको देखिंदा प्रस्तुत मुद्दा अन्तिम भएपछि उक्त धरौटी रकम प्रतिवादीलाई नियमानुसार फिर्ता दिनु र प्रस्तुत मुद्दासँग सम्बन्धित देखिएको सम्पूर्ण लगतहरु कट्टा गर्नु भनी शुरु काठमाडौं जिल्ला अदालतलाई लेखि पठाई दिनू।

२) फैसलामा चित्त नबुझेमा सम्मानित सर्वोच्च अदालतमा पुनरावेदन गर्न जानू भनी फैसलाको प्रतिलिपि सहित जानकारी उच्च सरकारी वकील कार्यालय पाटनलाई दिनू।

३) सरोकारवालाले फैसलाको प्रतिलिपि माग गरे "विशेष प्रकृतिको मुद्दाको कारवाहीमा पक्षको गोपनियता कायम राख्ने सम्बन्धी निर्देशिका २०७४" पालना गर्ने गरी नियमानुसार लाग्ने दस्तूर लिई प्रतिलिपि दिनू ।

४) प्रस्तुत फैसलाको विद्युतीय प्रति अपलोड गरी पिठमा जनाउँनू।

५) प्रस्तुत मुद्दाको दायरीको लगत कट्टा गरी शुरु मिसिल शुरु जिल्ला अदालतमा पठाई रेकर्ड मिसिल नियमानुसार अभिलेख शाखामा वुझाई दिनू।

(सुदर्शनदेव भट्ट)
न्यायाधीश

उक्त रायमा सहमत छु।

(अन्जु उप्रेती ढकाल)
न्यायाधीश

<u>फैसला तयार गर्न सहयोग पुऱ्याउने</u>

इजलास अधिकृत :- निशा चौधरी

कम्प्यूटर अपरेटर :- अनिल कुमार पन्त

ईति सम्बत् २०८१ साल जेठ महिना ०२ गते रोज ४ शुभम्..................................।

फैसला प्रमाणीकरण मितिः- अदालतको छाप